# जुवा ऐन, २०२०

लालमोहर र प्रकाशन मिति

२०२०।२।१६

## २०२० सालको ऐन नं. १

## जुवा खेल्न वा खेलाउन निषेध गर्न बनेको ऐन

नेपालका नागरिकहरुको आर्थिक हित एवं सदाचारको निमित्त जुवा खेल्न वा खेलाउनमा प्रतिबन्ध लगाउन आवश्यक एवं वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट राष्ट्रिय पञ्चायतको सल्लाह र सम्मतिले यो ऐन बनाईबक्सेकोछ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१)यस ऐनको नाम "जुवा ऐन, २०२०" रहेकोछ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

(३) यो ऐन २०२० साल भाद्र १ गतेदेखि प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : यस ऐनमा "जुवा" भन्नाले सम्पत्ति हार्ने वा जित्ने गरी कुनै संयोग आधारमा बाजी थापी खेलेको कुनै खेल सम्झनु पर्छ ।

तर सो शब्दले नेपाल सरकारको अनुमति लिई आयोजना गरिएको कुनै सार्वजनिक चिट्ठालाई र मनोरञ्जनको लागि कुनै सार्वजनिक मेला वा प्रदर्शनीमा खेलिएको खेललाई जनाउँदैन ।

३. **जुवा खेल्न वा खेलाउनमा प्रतिबन्ध** : (१) कुनै व्यक्तिले जुवा खेल्न खेलाउन वा जुवा खेल्ने खाल थाप्न वा आफ्नो हकको वा आफ्नो भोग चलन वा जिम्माको कुनै घर कोठा वा ठाउँलाई जुवा खेल्ने वा खेलाउने काममा व्यवहार गर्न वा गराउन, जुवा खेलेको ठाउँमा बस्न हुँदैन ।

(२) कुनै व्यक्तिले उपदफा (१) बमोजिम कसूर हुने काम कुरा भएको वा हुन लागेको देखी जानी सो दबाउन वा त्यस्तो कसूर गर्नको निमित्त अरु कसैलाई कुनै प्रकारको मद्दत वा दुरुत्साहन दिन हुँदैन ।

४. **दफा ३ मा मनाही गरेको काम गर्ने वा गराउनेलाई सजाय** : कुनै व्यक्तिले दफा ३ मा मनाही गरिएको कुनै काम गरे वा गराएमा निजलाई त्यस्तो प्रत्येक कसूर वापत देहाय बमोजिम सजाय हुनेछः-

(क) जुवा खेलेमा पहिलो पटकलाई रु. २००।- सम्म जरिवाना, दोस्रो पटकलाई एक महीनादेख तीन महीनासम्म कैद र तेस्रो पटक देखिकोलाई १ वर्ष कैद,

तर पहिलो पटक भएको जरिवानाको सजाय तिर्न नसकी सो वापत ऐन बमोजिम कैद म्याद ठेक्दा दुई महीना भन्दा बढी कैद हुने भयो भने पनि दुई महीनाभन्दा बढी ठेकिने छैन ।

(ख) आफ्नो हकको वा आफ्नो भोग चलन वा जिम्माको कुनै घर कोठा वा ठाउँलाई जुवाको खाल थाप्ने वा अरु कुनै प्रकारले जुवा खेल्ने काममा लगाएमा वा लगाउन दिएमा पहिलो पटकलाई रु. ३००।- जरिवाना, दोस्रो पटक देखिकोलाई तीन महीनादेखि नौ महीनासम्म कैद,

(ग) जुवा खेल्न लागेको ठाउँमा जुवा खेल्नको निमित्त सरसापट दिएमा साहूको थैली भूस गराई सो दिएको थैलीको डेढी बढाई जरिवाना,

(घ) अरु काम गरे गराएमा रु. ५०।- सम्म जरिवाना ।

५. **जुवा खेल्न उपयोग गरिएका सबै सामान जफत गर्ने** : दफा ४ बमोजिम सजाय हुने कसूर गर्ने उपयोग गरिएको वा उपयोग गर्ने मनसायले लगिएका वा राखिएका सबै नगदी जिन्सी जफत गरिनेछ ।

६. **जाहेरवालालाई सजाय नहुने** : (१) दफा ४ मा जुनसुकै कुरा लेखिएको भए तापनि दफा ३ मा मनाही गरिएको कुनै काम गर्ने कुनै व्यक्ति आफैंले पक्राउ हुनुभन्दा अगावै सो कुरा मुद्दा चलाउने अधिकारीका समक्ष जाहेर गरी साक्षी हुन मञ्जुर गरेमा निजलाई सजाय हुने छैन ।

(२) दफा ४ को खण्ड (घ) मा जुनसुकै कुरा लेखिएको भए तापनि सो खण्ड बमोजिम सजाय पाउने कुनै व्यक्तिले वारदातको साँचो कुरा बताएको छ भन्ने अदलतलाई लागेमा त्यस्ता व्यक्तिलाई अदालतले सजाय नगर्न पनि सक्तछ ।

७. **जाहेरवालालाई पुरस्कार** : दफा ३ मा मनाही गरिएको कुनै काम गरे भएको कुरा जाहेर गर्ने व्यक्तिलाई निजको जाहेरीबाट चलेको मुद्दामा दफा ४ बमोजिम कसूरदारहरुबाट उपर भएको जरिवानाको सयकडा तीस पुरस्कार दिइनेछ ।

८. **जुवा सम्बन्धी विशेष व्यवस्था** : (१) यस ऐनका अन्य दफाहरुमा जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले कुनै खास स्थान वा क्षेत्र तोकी स्वीकृति दिएमा दफा ३ मा लेखिएको कुनै काम गरे गराएमा यो ऐन बमोजिम कारवाई चलाईने र सजाय गरिने छैन ।

(२) उपदफा (१) बमोजिम स्वीकृति दिंदा नेपाल सरकारले आवश्यक शर्त तोक्न सक्नेछ ।

९.	**रुपान्तर** : अन्य प्रचलित नेपाल कानूनमा बाह्रमासे जुवा भन्ने शब्दहरु उल्लेख भएको ठाउँमा सो शब्दहरुको सट्टा “जुवा” भन्ने शब्द राखिएकोछ ।

१०.	**हदम्याद** : यस ऐन बमोजिम कसूर ठहरिने काम कुरा गरे भएको ३५ दिनभित्र मुद्दा दायर भइनसकेकोमा सो काम कुराका सम्बन्धमा सो हदम्याद पछि मुद्दा चल्नेछैन ।

---

**द्रष्टव्य** : केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ ले देहायको शब्दको सट्टा देहायको शब्द राखी रुपान्तरण गरेको छ :

”श्री ५ को सरकार” भन्ने शब्दको सट्टा “नेपाल सरकार” ।